## प्रकाशित कृतिहरू



# मणिरत्नमाला
## प्रश्नोत्तरीको अनुवाद



शरत्कुमार भट्टराई

# मणिरत्नमाला

## प्रश्नोत्तरीको अनुवाद

शरत्कुमार भट्टराई



आद्यजगद्‌गुरु श्रीशङ्कराचार्य


| | |
|---|---|
| प्रकाशक | : श्रीमती इन्दिरा भट्टराई<br>विजयचोक, प्रयागमार्ग, बत्तीसपुतली–९, काठमाडौं<br>फोन : ४११००९५, ४११००५८ |
| प्रकाशन मिति | : वि.सं. २०६७ दीपावली |
| प्रकाशित सङ्ख्या | : १००० |
| मूल्य | : श्रद्धा |
| कम्प्युटर सेटिङ्ग | : श्रीखड्गप्रसाद खनाल |
| मुद्रक | : एन्.पी.टी.सी. लिमिटेड<br>विमासमिति मार्ग, सरस्वतीनगर<br>फोन नं. ४८११२२६, ४८११३७१ |


# आशीर्वाद

श्रीशरत्कुमार भट्टराईले आफ्नू निवृत्तजीवन अद्वैतवेदान्तको चिन्तनअनुशीलत र लेखनमा समर्पित गरेको देख्ता मलाई अत्यन्त खुशी लागेको छ। उनले वेदान्त र भक्ति सम्बन्धी ग्रन्थहरू निरन्तर लेख्ने क्रममा आजसम्म ज्ञान र भक्ति, रासपञ्चाध्यायी, ब्रह्मसाक्षात्कार, उपनिषत्सार र ब्रह्मसूत्रसारसमेत लेखेर जिज्ञासु पाठक समक्ष पुर्‍याइसकेका छन्। ती ग्रन्थहरूमध्येमा 'ज्ञान र भक्ति' 'रासपञ्चाध्यायी' र अरू कतिपय संस्कृत भाषामा लेखिएका महत्त्वपूर्ण संस्कृतका श्लोकहरूलाई पनि समछन्दमा सरल नेपालीमा

अनुवाद गरेर उनले प्रकाशन गरिसकेको परिप्रेक्ष्यमा प्रवचनको क्रममा आद्य जगद्गुरु भगवत्पाद श्रीशङ्कराचार्यद्वारा रचना गरिएको मणिरत्नमालाप्रश्नोत्तरीको अनुवाद गर्न मैले उनलाई भनेको थिएँ । गुरुआज्ञालाई स्वीकार गरेर उनले सुन्दर अनुवाद तयार गरी छपाएर जिज्ञासु पाठक समक्ष ल्याएकोमा भट्टराईलाई म हार्दिक धन्यवाद दिन्छु । यस्तै लोकोपकारी पुनीत कार्य भविष्यमा पनि गर्दै जानेतर्फ उनको प्रवृत्ति लागोस् भनी म आशीर्वाद दिन्छु ।

दिनाङ्क : २०६७।७।२० डा.स्वामी रामानन्द गिरि

श्रीशङ्कराचार्यमठ, देवपत्तन, पशुपति

# मणिरत्नमालाप्रश्नोत्तरीका विषयमा

यो मणिरत्नमालाप्रश्नोत्तरी जगद्गुरु आद्य श्रीशङ्कराचार्यद्वारा रचित अमूल्य कृति हो । उपजाति छन्दमा लेखिएको यस मणिरत्नमालाप्रश्नोत्तरीमा अत्यन्त सुन्दर र प्रसादगुणले युक्त जम्मा ३२ ओटा श्लोकहरू छन् । यसको अनुवाद आदिकवि श्रीभानुभक्त आचार्यले प्रश्नोत्तरमालाका नामबाट धेरै अघि गर्नुभएको थियो । मैले सानै उमेरमा त्यो अमूल्य रत्नको उच्चारण मेरी गुरुआमा बालकुमारीज्यूबाट सुनेको थिएँ । त्यसले मेरो बालमस्तिष्कमा ठूलो प्रभाव पारेको थियो ।

उपर्युक्त कुरा धेरै अघिको हो । म काठमाडौँ पढ्न आएपछि त्यो



मणिलाई मैले बिर्सिसकेको थिएँ । यसलाई धेरै रसिक विद्वान्हरूले अनुवाद गरेर जिज्ञासु पाठक समक्ष पुऱ्याउँदै गएका छन् । यसैक्रममा एक वर्ष अघि मेरा मित्र हेमराज ज्ञवालीले अनुवाद गरेर गीता समुदय प्रकाशन संस्थाद्वारा लोकार्पण गराउनुभएको थियो । त्यसले मलाई बाल्यकालमा गुरुआमाबाट सुनेको प्रश्नोत्तरीको पुनः स्मरण गराएको छ ।

श्री १००८ डा.स्वामी रामानन्द गिरिज्यूको प्रवचन श्रवण गर्ने क्रममा मलाई उहाँले आद्य शङ्कराचार्य विरचित मणिरत्नमाला-प्रश्नोत्तरीको समछन्दमा नेपाली भाषामा अनुवाद गर्न भन्नुभएको थियो । सो अनुसार मैले यसको यथाशक्ति र यथामति अनुवाद



गरेर स्वामीज्यूमा समर्पण गरेको छु ।

योभन्दा अघि भक्ति र ज्ञान, रासपञ्चाध्यायी, अन्य फुटकर श्लोकहरू, कालियदमन समेत भागवतका केही श्लोकहरू, उपनिषद्का केही मन्त्रहरू, पञ्चदशीका केही श्लोकहरू र स्वामी मधुसूदन सरस्वतीप्रणीत केही श्लोकहरूको पनि समछन्दमा अनुवाद गरेर मैले प्रकाशन गरिसकेको छु । त्यही कुरा थाहा पाएर होला सायद स्वामीज्यूले मणिरत्नमालाप्रश्नोत्तरीको अनुवाद गर्न मलाई अह्राउनुभएको हुनसक्तछ भन्ने सम्झेर मैले तुरुन्तै उहाँको भनाइ मानेर अनुवाद गरी प्रकाशित गरेको हुँ । प्रेरणाका र शुभाशीर्वादका लागि स्वामीज्यूमा म हार्दिक कृतज्ञता अर्पण गर्दछु । त्वदीयं वस्तु गोविन्द तुभ्यमेव समर्पये । श्रीकृष्णार्पणमस्तु ।

शरत्कुमार भट्टराई

असारसंसारसमुद्रमध्ये
सम्मज्जतो मे शरणं किमस्ति ।
गुरो कृपालो कृपया वदैतद्
विश्वेशपादाम्बुजदीर्घनौका ॥

असार संसार समुद्र माझ
डुब्दै गएमा कुन हुन्छ साथ ।
हे दीनबन्धो ! गुरुजी बताऊ
हुन् कृष्णका पाउ डुँगा समाऊ ॥
(१)



बद्धो हि को यो विषयानुरागी
का वा विमुक्तिर्विषये विरक्तिः ।
को वास्ति घोरो नरकः स्वदेह–
स्तृष्णाक्षयः स्वर्गपदं किमस्ति ॥

को बद्ध हो ? जो विषयानुरागी
को मुक्त हो ? जो छ सधैँ विरागी ।
त्यो नर्क के हो ? निज देह ठान
तृष्णाक्षय स्वर्ग भनेर जान ॥
(२)



संसारहृत्कः श्रुतिजात्मबोधः
को मोक्षहेतुः कथितः स एव ।
द्वारं किमेकं नरकस्य नारी
का स्वर्गदा प्राणभृतामहिंसा ॥

संसार नास्ने श्रुतिजन्यबोध
हो मोक्षको कारण सो प्रबोध ।
हो नर्कको कारण नै अविद्या
र मुक्तिको कारणमात्र विद्या ॥
(३)



शेते सुखं कस्तु समाधिनिष्ठो
जागर्ति को वा सदसद्विवेकी ।
के शत्रवः सन्ति निजेन्द्रियाणि
तान्येव मित्राणि जितानि यानि ॥

को हो सुखी ? जो छ समाधियुक्त
जागा छ को ? जो सदसद्विवेकी ।
हुन् शत्रु को ? इन्द्रियमात्र सारा
जिते तिनै इन्द्रिय मित्र सारा ॥
(४)

को वा दरिद्रो हि विशालतृष्णः
श्रीमांश्च को यस्य समस्ततोषः ।
जीवन्मृतः कस्तु निरुद्यमो यः
किं वामृतं स्यात्सुखदा निराशा ॥

दरिद्र को हो ? जसको छ तृष्णा
को हो धनी ? जो छ सधैँ वितृष्ण ।
ज्यूँदै मरेको कुन ? आलसी हो
पीयूष के हो ? सुखदा निराशा ॥
(५)



पाशो हि को यो ममताभिधानः
सम्मोहयत्येव सुरेव का स्त्री ।
को वा महान्धो मदनातुरो यो
मृत्युश्च को वापयशः स्वकीयम् ॥

पाशो भनेका ममता अहं हुन्
रक्सी सरी मादक हो अविद्या ।
महान्ध को ? कामुक तुच्छ कामी
के मृत्यु हो ? दुर्यश वा अविद्या ॥
(६)



को वा गुरुर्यो हि हितोपदेष्टा
शिष्यस्तु को यो गुरुभक्त एव ।
को दीर्घरोगो भव एव साधो
किमौषधं तस्य विचार एव ॥

को हो गुरु ? श्रेय बताउने जो
को शिष्य हो ? जो गुरुभक्त एक ।
हो रोग ठूलो कुन ? जन्ममृत्यु
हो औषधी के ? सदसद्विवेक ॥
(७)



किं भूषणाद्भूषणमस्ति शीलं
तीर्थं परं किं स्वमनो विशुद्धम् ।
किमत्र हेयं कनकं च कान्ता
श्राव्यं सदा किं गुरुवेदवाक्यम् ॥

राम्रो छ के भूषण ? शील शुद्ध
र तीर्थ के हो ? मन नै विशुद्ध ।
के छोड्नु राम्रो ? ममता अविद्या
श्रोतव्य के हो ? गुरु वेदविद्या ॥
(८)

के हेतवो ब्रह्मगतेऽस्तु सन्ति
सत्सङ्गतिर्दानविचारतोषाः ।
के सन्ति सन्तोऽखिलवीतरागाः
अपास्तमोहाः शिवतत्त्वनिष्ठाः ॥

हुन् हेतु के ? ब्रह्मविचारलाई
सत्सङ्ग दानादिक वा भलाइ ।
को सन्त हो ? जो छ विरक्त खास
ब्रह्मज्ञ जस्को शिवमा छ वास ॥

(९)



को वा ज्वरः प्राणभृतां हि चिन्ता
मूर्खोऽस्ति को यस्तु विवेकहीनः ।
कार्या प्रिया का शिवविष्णुभक्तिः
किं जीवनं दोषविवर्जितं यत् ॥

प्राणीहरूको ज्वर के ? कुचिन्ता
को मूर्ख हो ? जो छ विचारहीन ।
कर्तव्य के हो ? शिवविष्णुभक्ति
हो जीवनी के ? सब दोषहीन ।

(१०)



विद्या हि का ब्रह्मगतिप्रदा या
बोधो हि को यस्तु विमुक्तिहेतुः ।
को लाभ आत्मावगमो हि यो वै
जितं जगत्केन मनो हि येन ॥

विद्या छ के ? ब्रह्म बुझाउने जो
हो ज्ञान के ? कारण मुक्तिको जो ।
के लाभ हो ? ब्रह्म बनेर बस्नु
को हो विजेता ? मनलाई जित्नु ॥

(११)



शूरान्महाशूरतमोऽस्ति को वा
मनोजबाणैर्व्यथितो न यस्तु ।
प्राज्ञोऽथ धीरश्च समस्तु को वा
प्राप्तो न मोहं ललनाकटाक्षैः ॥

शूराहरूमा अति को छ शूर ?
फस्तैन मायासँग जो छ शूर ।
ज्ञानी गुनी धीर छ को जगत्मा
लत्रिन्न मायासँग जो फगत्मा ॥

(१२)

विषाद्विषं किं विषयाः समस्ता
दुःखी सदा को विषयानुरागी ।
धन्योऽस्तु को यस्तु परोपकारी
कः पूजनीयः शिवतत्त्वनिष्ठः ॥

विषादि के हुन् ? विषयादि भोग
दुःखी सधैँ को ? विषयानुरक्त ।
को धन्य हो ? जो छ परोपकारी
को पूज्य हो ? जो शिवतत्त्वधारी ॥
(१३)



सर्वास्ववस्थास्वपि किं नकार्यं ?
किं वा विधेयं ? विदुषा प्रयत्नात् ।
स्नेहं च पापं पठनं च धर्मं
संसारमूलं हि किमस्ति चिन्ता ?

कस्तै परे तापनि पाप छोड
सम्बन्ध संसारविषे न जोड ।
स्वाध्याय धर्मादिक नित्य गर्नू
संसारको मूल छ एक चिन्ता ॥
(१४)



विज्ञान्महाविज्ञतमोऽस्ति को वा ?
नार्या पिशाच्या न च वञ्चितो यः ।
का शृङ्खला प्राणभृतां हि नारी
दिव्यं व्रतं किञ्च समस्तदैन्यम् ॥

को हो समझदार र बुद्धिमान ?
जो बच्छ मायासँगबाट जान ।
हो शृङ्खला के ? ममता अहन्ता
हो नम्रता नै व्रत दैन्यहन्ता ॥
(१५)



ज्ञातुं न शक्यं न किमस्ति ? सर्वै–
र्योषिन्मनो यच्चरितं तदीयम् ।
का दुस्त्यजा ? सर्वजनैर्दुराशा
विद्याविहीनं पशुरस्ति को ? वा ॥

जान्दैन कोही पनि के कुरा हो ?
माया र उस्को मनको कुरा हो ।
के त्यागन गाह्रो ? अति तुच्छ काम
विद्याविनाको नर हो विकाम ॥
(१६)

वासो न सङ्गः सह कैर्विधेयो
मूर्खैश्च नीचैश्च खलैश्च पापैः ।
मुमुक्षुणा किं त्वरितं विधेयं
सत्सङ्गतिर्निर्ममतेशभक्तिः ॥

को साथमा बोल्नु र बस्नु हुन्न ?
पापी भँडाहा खलसाथ हुन्न ।
मुमुक्षुले के अति शीघ्र गर्ने ?
सत्सङ्ग सन्तोष र भक्ति गर्ने ॥
(१७)



लघुत्वमूलं च किमर्थितैव
गुरुत्वमूलं यदयाचनं च ।
जातो हि को यस्य पुनर्नजन्म
को वा मृतो यस्य पुनर्नमृत्युः ॥

लघुत्व के ? दीन बनेर माग्नु
गुरुत्व के हो ? कहिल्यै नमाग्नु ।
को जन्मियो ? जो पछि जन्मिँदैन
को मर्छ ? जो त्यो पछि आउँदैन ॥
(१८)



मूकोऽस्ति को वा बधिरश्च को वा
वक्तुं न युक्तं समये समर्थः ।
तथ्यं सुपथ्यं न शृणोति वाक्यं
विश्वासपात्रं न किमस्ति नारी ॥

लाटो र बैह्रो कसको छ नाम ?
गर्दैन जल्ले हित तथ्य काम ।
विश्वासको बाहिर को छ ? खास
ममत्वमा नै बन है उदास ॥
(१९)



तत्त्वं किमेकं शिवमद्वितीयं
किमुत्तमं सच्चरितं यदस्ति ।
त्याज्यं सुखं किं ? स्त्रियमेव सम्यग्
देयं परं किं ? त्वभयं सदैव ॥

हो तत्त्व के ? श्रीशिवतत्त्व एक
आचार हो शुद्ध चरित्र एक ।
छोड्दा हुने हो सुख के छ ? योषा
हो दान ठूलो कुन ? हो अहिंसा ॥
(२०)

शत्रोर्महाशत्रुतमोऽस्ति को वा
कामः सकोपानृतलोभतृष्णाः ।
न पूर्यते को ? विषयैः स एव
किं दुःखमूलं ? ममताभिधानम् ॥

शत्रुहरूमा कुन शत्रु ठूलो ?
कामादितृष्णा बुझ शत्रु ठूलो ।
खाँदा न पुग्ने कुन ? कामतत्त्व
हो दुःखको कारण के ? ममत्व ॥
(२१)



किं मण्डनं साक्षरता मुखस्य
सत्यं च किं भूतहितं सदैव ।
किं कर्म कृत्वा न हि शोचनीयं
कामारिकंसारिसमर्चनाख्यम् ॥

हो वक्त्रको भूषण बोल्नु राम
हो सत्य के ? भूतहितादि काम ।
के काम गर्दा पछुतो हुँदैन ?
हरीशको पूजनले हुँदैन ॥
(२२)



कस्यास्ति नाशे मनशो हि मोक्षः
क्व सर्वथा नास्ति भयं विमुक्तौ ।
शल्यं परं किं निजमूर्खतैव
के के ह्युपास्या गुरुदेववृद्धाः ॥

के नाशिँदा मोक्ष हुने ? मनैको
हुँदैन केमा भय ? हो विमोक्ष ।
के दुःख्छ धेरै ? निज मूर्खता नै
उपास्य के हुन् ? गुरु देव वृद्ध ॥
(२३)



उपस्थिते प्राणहरे कृतान्ते
किमासु कार्यं सुधिया प्रयत्नात् ।
वाक्कायचित्तैः सुखदं यमघ्नं
मुरारिपादाम्बुजचिन्तनञ्च ॥

प्राणै लिने काल अगाडि आए
के गर्नु राम्रो सुधीले बताऊ ?
त्यो कार्य हो वाक् मन देहलाई
श्रीकृष्णाको चिन्तनमा लगाऊ ॥
(२४)

के दस्यवः सन्ति कुवासनाख्याः
कः शोभते यः सदसि प्रविद्यः ।
मातेव का या सुखदा सुविद्या
किमेधते दानवशात्सुविद्या ॥

हुन् डाकु को ? दुष्ट कुवासना हुन्
राम्रो सभामा कुन हुन्छ ? विद्वान् ।
आमा सरी को सुख दिन्छ ? विद्या
बाँड्दा छ बढ्ने कुन ? हो सुविद्या ॥





कुतो हि भीतिः सततं विधेया
लोकापवादाद्भवकाननाच्च ।
को वातिबन्धुः ? पितरश्च के वा
विपत्सहायः परिपालका ये ॥

डराउने हो कसबाट नित्य ?
निन्दा र संसार छ जो अनित्य ।
को बन्धु हो ? जो भयमा छ साथ
को बाबु हो ? पाल्दछ जो अनाथ ॥





बुद्ध्वा न बोध्यं परिशिष्यते किं
शिवप्रसादं सुखबोधरूपम् ।
ज्ञाते तु कस्मिन्विदितं जगत् स्यात्
सर्वात्मकं ब्रह्मणि पूर्णरूपे ॥

जानेर के शेष रहन्न जान्न ?
त्यो हो परब्रह्म विशुद्धबोध ।
जानेर केले सब हुन्छ बोध ?
त्यो ब्रह्म सर्वात्मक पूर्णबोध ॥





किं दुर्लभं सद्गुरुरस्ति लोके
सत्सङ्गतिर्ब्रह्मविचारणा च ।
त्यागो हि सर्वस्य शिवात्मबोधं
को दुर्जयः सर्वजनैर्मनोजः ॥

अप्राप्य के ? सद्गुरु सत्सुसङ्ग
वेदान्तचर्चा भगवत्प्रसङ्ग ।
सर्वस्वको त्याग र आत्मबोध
अजेय के हो ? मनको निरोध ॥

पशोः पशुः को न करोति धर्मं
प्राधीत शास्त्रोऽपि न चात्मबोधः ।
किं तद् विषं भाति सुधोपमं स्त्री
के शत्रवो मित्रवदात्मजाद्याः ॥

को हो पशुको पशु ? जो अधर्मी
शास्त्रज्ञ भै जो छ अतज्ज्ञ कर्मी ।
सुधा सरीको विष के ? कुदारा
को शत्रु हुन् ? मित्र समान छोरा ॥
(२९)



विद्युच्चलं किं धनयौवनायु–
र्दानं परं किं च सुपात्रदत्तम् ।
कण्ठंगतैरप्यसुभिर्न कार्यं
किं किं विधेयं च ? सदा शिवार्चा ॥

विद्युत् सरी के ? धनयौवनादि
हो दान ठूलो दिनु पात्रलाई ।
मर्नै परोस् पाप कबै नगर्नू
शिवार्चना गर्नु सधैँ रमाइ ॥
(३०)



अहर्निशं किं परिचिन्तनीयं
संसारमिथ्यात्वशिवात्मतत्त्वम् ।
किं कर्म यत्प्रीतिकरं मुरारेः
क्वास्था न कार्या सततं भवाब्धौ ॥

गर्ने सधैँ चिन्तन के ? ज्ञतत्त्व
संसार मिथ्या अनि आत्मतत्त्व ।
सुकर्म के हो ? बुझ कृष्णपिर्ति
के दूर राख्ने ? भवसाथपिर्ति ॥
(३१)



कण्ठं गता वा श्रवणं गता वा
प्रश्नोत्तराख्या मणिरत्नमाला ।
तनोतु मोदं विदुषां सुरम्यं
रमेशगौरीशकथेव सद्यः ॥

प्रश्नोत्तरी यो मणिरत्नमाला
पढ्ला कि आफैँ अथवा सुनाउला ।
श्रीकृष्णको शङ्करको कथाझैँ
विद्वान् सुधी मोद तुरुन्त पाउला ॥
(३२) ❀